




विश्वास दीप तिगेला

नियात्राकार विश्वासदीप तिगेलाले अहिले संक्षिप्त बोर्नियो परिचय लिएर आएका छन्। बेलायती सेनामा कार्यरत विश्वासले व्यस्त समयका बावजुद अनलाइन नेपाली साहित्य मञ्च जति मज्जाले चलाएका छन्, उत्तिकै सक्रिय अन्य साहित्यिक गतिविधिमा पनि छन्। यस अघिको "गृहयुद्धका पीडा" भन्दा फरक विवरणात्मक शैलीमा प्रस्तुत गरेका छन् - बोर्नियो परिचय। पिता, पुर्खाको पदचिन्ह पछ्याउँदै विश्वास धेरै ठाउँ डुलेका छन्। यसले पाठकलाई इण्डोनेशिया, मलेशिया र ब्रुनाइमा विस्तारित विशाल भूभागमा डुलाउँछ, डुलाउँदा डुलाउँदै धेरै ठाउँमा भुलाउँछ, यो उनको खुबी हो। ४५ वर्षसम्म सेनामा जागिर खाएर घर फर्कन नमान्ने 'चोखेम्वा' जस्ताको रोचक सन्दर्भ यसमा छ। सैनिक जीवनको अनुभव नभएकाहरूलाई पनि उनको यो कृतिले त्यो दुर्लभ जीवनको अनुभूति दिलाउँछ। गोर्खालीगाथा र जातीय अभिलेखका लागि यो कृति उत्तिकै पठनीय र संग्रहणीय छ।

रमेश पौडेल

अनलाइन नेपाली साहित्य मञ्च
Online Nepali Literature Forum
www.sahityaGhar.com

978-9937-2-00219

# सङ्क्षिप्त बोर्नियो परिचय

## विश्वास दीप तिगेला

अनलाइन नेपाली साहित्य मञ्च

*www.sahitya.com.np*



| | |
|---|---|
| सर्वाधिकार | : लेखकमा सुरक्षित |
| प्रकाशक | : अनलाइन नेपाली साहित्य मञ्च www.sahityaGhar.com |
| संस्करण | : प्रथम, २०६४ (२००७ अक्टोबर) |
| प्रकाशित सङ्ख्या | : २००० प्रति |
| टाइपिङ | : भोजकुमारी लिम्बू |
| सेटिङ | : अम्लारी कम्प्युटर |
| आवरण | : रमेश पौडेल |
| वितरक | : दुर्गा न्युज एन्ड बुक्स डिस्ट्रिब्युटर्स, फोन नं० ०१-४२४४०८२,न्युरोड |
| मुद्रण | : इन्द्रेणी अफ्सेट प्रेस |
| मूल्य | : रू० ६०/-, ब्रुनाई $5, **£1** |

ISBN : 978-9937-2-0021-9

***Sanchhipta Borneo Parichaya***

by Biswasdip Tigela
E-mail: biswas@post.com,
Website: www.biswas.com.np/creation

# बोर्नियो द्विपमा विश्वासदीप

साहित्यका विविध विधामा क्रियाशील विश्वासदीप तिगेलाको बोर्निया परिचय, पाण्डुलिपि पाउँदा खुवै खुशी लाग्यो । ब्रिटिस फोर्सेसमा कार्यरत अहिलेका धेरै युवाहरू छुट्टीमा आउँदा केही न केही “कृति कोसेली” बोकेर आउने गरेका छन् र यो पत्रिमा अझ जाँगरिला विश्वास दीप तिगेला लाग्छ मलाई ।

यो टापुको भौगोलिक अवस्थाका बारेमा विश्वासले विस्तृत व्याख्या र विश्लेषण गरेका छन् । मलाई यो पाण्डुलिपि यस अर्थमा रोचक लाग्यो कि, म आफैँले दशकौं अघि टेकेको र देखेको ठाउँको बारेमा विश्वासको शब्द चित्रले ती अतीतका दिन र पुराना सम्भानाहरूलाई ताजा बनाइदियो ।

रोजगारीका सिलसिलामा यस कृतिभित्र उल्लेख गरिएका अधिकांश स्थानहरूमा म र विश्वासजस्ता धेरैका पाइला र पसिना पोखिएका थिए र छन् पनि । ब्रुनाईमा गोर्खालीको उपस्थिति एउटा इतिहासकै पाटो बनिसके पनि त्यसको खोजबीन भने भएको थिएन्, ब्रुनाईको Sea View नजिक रहेको Gurkha Ce.etry ती गोर्खाली आत्माहरूको पुकार पनि विश्वासले यस कृतिभित्र समेटेको पाउँदा मन अझ भारीभारी भयो ।

हामीले हिजो जे गर्‍यौँ त्यसको खोजबीन र दस्तावेजको रूपमा विश्वासले यो कृतिलाई ल्याउँदा असाध्यै खुशी लाग्यो । जमाना बदलिकेको छ । आजका लाहुरे युवाहरू बन्नुका साथसाथै कलम पनि उत्तिकै सशक्त रूपमा समाउन थालेदेखि



गोर्खाली इतिहास र कथाहरू जीवन्त रूपमा आउन थालेका छन् । आफ्नो जातीय पहिचान र खोजको सिलसिलामा यो चोखेम्बासम्म पुगेको रोचक... मलाई औधी छोयो । आफ्ना पिता, पुर्खाहरूलाई खोज्दै जाँदा विश्वास त्यहाँसम्म पुगेका छन् । ४५ वर्षसम्म सेनामा कार्यरत चोखेम्बाको जीवन कहानी अझ रोचक र कौतुहलपूर्ण थियो कि भन्ने लाग्छ मलाई । साहित्य र पत्रकारितामा सक्रिय विश्वास दीप तिगेला लाहुरे मात्रै हैनन् । सेनामा काम गर्नेले पनि फुर्सदीको समय नभनी देश र समाजका लागि धेरै गर्न सक्दा रहेछन् भन्ने प्रमाण मिलेको छ, विश्वासको गन्तव्य मैले भरोसा गरेजस्तै बनोस् हर्दिक शुभकामना ।

**मेजर किशोर गुरुङ**
बी० एफ्० बी० एस्०
काठमाडौँ

# बोर्नियो भित्र घोत्लिँदा

हात्तीखर्क -२, धनकुटामा २०३३ सालमा जन्मनुभएका युवा श्री विश्वास दीप तिगेलालाई मैले ज्यादै उत्साही तथा कर्मशील व्यक्तिको रूपमा पाएँ । वहाँ विदेशमा बसेर सैनिक सेवामा सेवारत रहँदा रहँदै लेख्नुभएको 'सङ्क्षिप्त बोर्नियो परिचय' नामक पुस्तकको पाण्डुलिपि अध्ययन गर्ने अवसर प्राप्त भयो । वहाँले बोर्नियो टापुको भौगोलिक अवस्थिति प्राकृतिक विभाजन, प्राकृतिक सुन्दरता, वनसम्पदाको महत्व, वनविनासको समस्या, प्राकृतिक ग्यासभण्डार, मानव बसोबास र उसको भाषा, धर्म, संस्कार आदि समाजका विविध क्षेत्रमा समेत झलक प्रस्तुत गर्नुभएको छ ।

शताब्दीऔँदेखि साम्राज्यवादीहरूको चपेटामा परेको बोर्नियो समयको अन्तरालमा हल्यान्ड (वर्तमान निदरल्यान्ड) का डच (Dutch) इङ्ल्यान्डका अङ्ग्रेज, चिनियाँ आदि विविध व्यापारीहरूले व्यापारबाट प्रशस्त फाइदा प्राप्त गरेका थिए । पछि दोस्रो विश्वयुद्ध (सन् १९३९-४५) को अवधिमा जापानले यस क्षेत्रमाथि अधिकार जमायो भने युद्धपछि पनि इन्डोनेसिया र फिलिपिन्सले यस सुन्दर टापुमाथि पटकपटक धावा बोले ।

पन्ध्रौँ तथा सोह्रौँ शताब्दीमा युरोपमा आएको पुनर्जागरण (Renaissance) को कारण युरोपेलीहरूमा नयाँ जागरण तथा उत्साह उत्पन्न भयो । भाषा, साहित्य, कला, विज्ञान, गणित, भौगोलिक खोज आदि हरेक क्षेत्रमा व्यापक प्रगति भयो । विज्ञानको क्षेत्रमा भएको प्रगतिले नयाँनयाँ आविष्कारहरू गरिए अनि विभिन्न प्रकारका मेसिनहरूको निर्माण गरी उद्योगको क्षेत्रमा व्यापक प्रगति भयो । यसै



क्रममा सर्वप्रथम बेलायतमा औद्योगिक क्रान्ति (Industrial Revolution) प्रारम्भ भएर अन्य मुलुकहरूमा पनि क्रमशः फैलियो । दिशासूचक यन्त्रको आविष्कारको कारण सामुन्द्रिक मार्गद्वारा टाढाटाढाका भूभागहरू पत्ता लगाउन सजिलो भयो । यस क्रममा हल्यान्ड, पुर्तगाल, इङ्ल्यान्ड, डेनमार्क, फ्रान्स आदि देशहरूले नयाँ ठाउँहरू पत्ता लगाउने र आफ्नो उपनिवेश स्थापना गर्ने कार्यमा प्रतिस्पर्धा गर्न थाले ।

उद्योगको विकासले व्यापारको विस्तार भयो । उद्योग सञ्चालनको लागि कच्चापदार्थ उपलब्ध गर्न र तयारी मालसामान बेच्नको लागि उपनिवेशको आवश्यकता भयो । यसैले शक्तिशाली युरोपेली राष्ट्रहरूले उपनिवेश प्राप्तिको लागि प्रतिस्पर्धा गर्न लागे । यसबाट ती शक्तिशाली राष्ट्रहरूबीच शत्रुता बढ्यो । उपनिवेश स्थापना गर्ने दौडमा पुर्तगाल, हल्यान्ड र इङ्ल्यान्ड ठूला प्रतिस्पर्धी देखिए ।

इङ्ल्यान्डमा भएको औद्योगिक विकासको कारण उसको अर्थतन्त्र ज्यादै बलियो भयो । त्यसैले सामरिक शक्तिमा पनि उसलाई अरूले भेट्टाउन सकेनन् । अन्य राष्ट्रहरूको अधिकारमा भएका विभिन्न उनिवेशहरूमाथि पनि इङ्ल्यान्डले क्रमशः अधिकार गऱ्यो अनि अन्य राष्ट्रहरूको तुलनामा बढी शक्तिशाली भयो । कालान्तरमा फ्रान्स, जर्मनी, इटाली, रुस, अष्ट्रिया-हङ्गेरी, अमेरिका, जापानलगायतका मुलुकहरू पनि साम्राज्यविस्तार तथा हातहतियारको उत्पादनमा अग्रसर भएकाले युरोपमा गुटबन्दी प्रारम्भ भयो । सन् १९१४-१८ को प्रथम विश्वयुद्ध र सन् १९३९-४५ को दोस्रो विश्वयुद्ध हुनमा शक्ति राष्ट्रहरूको होडबाजीलाई मुख्य कारणको रूपमा लिन सकिन्छ ।

बोर्नियोमा नेपाली योद्धाहरूको पदार्पण गरेको इतिहास पनि निकै लामो छ । अमेरिका, भारतलगायत विश्वका विभिन्न क्षेत्रमा आफ्नो उपनिवेश खडा गरेर साम्राज्य विस्तार गरेको इङ्ल्यान्ड त्यससमय विश्वको सर्वाधिक शक्तिशाली राष्ट्र थियो । भारतमा अधिकार गरेपछि उसको कुदृष्टि नेपालमाथि परेको कारणले नै सन् १८१४- १८१६ (वि० सं० १८७१-७२) मा नेपाल-अङ्ग्रेज युद्ध भयो । अङ्ग्रेजसँग वीरतापूर्ण युद्ध लड्ने इमान्दार, देशभक्त, साहसी तर सोझा नेपाली युवा शक्तिलाई ब्रिटिस भारतीय सैन्यमा भर्ना गर्न अङ्ग्रेजहरू ज्यादै लालयित बने । त्यसै समय

गोरखा रेजिमेन्टको गठन गरेका थिए भने पछि युद्ध समाप्त भएपछि थप नेपाली युवाहरूलाई ब्रिटिस भारतीय सेनामा भर्ना गराए । यो क्रम पछिसम्म पनि कायम भयो । ब्रिटिस भारतको इस्ट इन्डिया कम्पनी (East India Company) को सरकारले प्रशस्त नेपाली युवाहरूलाई आफ्नो फौजमा भर्ना गरी उसको साम्राज्यको रक्षार्थ विभिन्न नाकामा खटायो । सन् १९१४-१९१८ र सन् १९३९-१९४५ बीच भएको पहिलो र दोस्रो विश्वयुद्धताका नेपाली युवाहरूले ब्रिटिस भारतीय सेनाको रूपमा जर्मनी र जापानी फौजको मुकाबिला गरे । यसक्रममा लाखौँ योद्धाहरूले भाग लिए भने हजारौँको सङ्ख्यामा साम्राज्यवादीहरूको स्वार्थको लडाइँमा आफ्नो प्राण आहुति गरे ।

दोस्रो विश्वयुद्धताका नै ब्रिटिस भारतीय फौजमा कार्यरत नेपाली योद्धाहरू विभिन्न मोर्चामा खटिएका थिए । सन् १९४१ मा जापानी फौज इन्डोनेसिया, मलाया र बर्मा विजय गरी आसामको सीमा क्षेत्र इम्फालसम्म आइपुग्योक । यस्तो अवस्थामा यूरोपका विभिन्न मोर्चामा रहेका ब्रिटिस भारतीय नेपाली फौजलाई जापानी फौज लखेट्नको लागि पूर्वी मोर्चामा खटाइयो । १९४५ मा जापानले आत्मसर्मपण गरेपछि युद्ध थामियो तर यस अघिन नै गठन भएको मलायन जातीय मुक्ति आर्मीका कमान्डर चिन पेङ (Chin Peng) लाई ब्रिटिस सरकारले स्वतन्त्रता नदिएकोले ब्रिटिस फौजविरुद्ध विद्रोह गरे । यस्तो अवस्थामा ४ रेजिमेन्टका ८ पल्टन ब्रिटिस भारतीय नेपाली फौज मलेसिया राखिए । अन्त्यमा ३१ अगस्ट, १९५६ मा बेलायतले मलायालाई स्वतन्त्रता दियो तापनि सन् १९६० सम्म फाटफुट युद्धहरू भइनै रहे । यसरी सन् १९४८ देखि सन् १९६० सम्मको मलायाको युद्धलाई **'मलाया इमजेन्सी'** भनिन्छ । यस अवधिमा १६९ जना गोरखालीहरूले ज्यान गुमाए भने घाइतेको सङ्ख्याको कुनै आँकडा नै छैन् ।

बोर्नियो टापुभित्र पर्ने ब्रुनाई (Brunei) एक सानो तर सुन्दर स्वतन्त्र राज्य हो । यहाँका राजा ओमार अलि सेरियालाई ८ डिसेम्बर, १९६२ मा विद्रोही नेता यासिर अफन्डीले नियन्त्रणमा लिए । यस घटनाको २४ घण्टा भित्रै त्यहाँको ब्रिटिस गोरखा फौजले राजपरिवारलाई सकुशल गर्न सफल भयो त्यसबेला जोहरबारू, कुलाङ, मलाका, इयो, सिङ्गापुर र हङकङमा रहेका ४ रेजिमेन्टका ८ बटालियनमा करिब ९० हजार ब्रिटिस गोरखा सैनिकहरू थिए । यसैले सन् १९६४ देखि त्यहाँको ब्रिटिस गोरखा फौज बनाई सरकारको मातहतमा गोरखा रिजर्भ युनिट (GRU) को रूपमा



रहेको हो । यसपछिका विभिन्न विद्रोह दबाउनका साथै विभिन्न समयमा भएका साना-ठूला लडाइँमा मारिएका ६०-६५ जना गोरखालीहरूको चिहान तथा शिलालेख देख्या अहिले पनि अरू गोरखालीहरूलाई भावविहल बानाउँछ । युद्धमा अभूतपूर्व वीरता प्रदर्शन गर्ने लान्स कर्पोरल रामबहादुर लिम्बूले VC पद प्राप्त गरेकाले गोरखाली सैनिकहरूको इतिहास नै महत्वपूर्ण योगदान पुऱ्याएका प्रस्ट हुन्छ ।

श्री विश्वास तिगेला प्रकृतिप्रेमीसमेत भएको पाइन्छ । वहाँले लाभुवान टापुको र मिरी सहरको सुन्दरता, भव्यता र आकर्षणताबारे सत्य तथ्यमा आधारित भएर सविस्तार वर्णन गर्नुभएको छ । वहाँको तथ्यपरक विश्लेषणात्मक वर्णनले पाठक वर्गलाई लाभुवान टापु र मिरी सहर घुम्न जाउँजाउँ लाग्ने पारेको छ ।

ब्रुनाईलाई आजको रूपमा ल्याउने कार्यमा युवा अवस्थामा मारिएका ८ गोरखा राइफल्सका, कालीबहादुर थापा, भूपू गोरखा क्याप्टेन गजरधन तिगेला लिम्बूलगायत लाखौँ वीर गोरखालीहरूले प्राणको आहुती दिएका सयौँ स्थानहरू छन्, ब्रुनाई त एक सानो उदाहरण मात्र हो । साम्राज्यवादी शक्तिहरूको स्वार्थको लागि कति योद्वाले ज्यान गुमाएर विदेशी माटोमा विलीन भए, त्यसको लेखाजोखा छैन । सुखी भविष्यको सपना बोकेर काम र मामको लागि विदेशी सेनामा काम गर्न बाध्य भएका कयौँ गोरखालीहरूमध्ये कतिपयलाई ब्रनाईमा सुरक्षित गरिएको ब्रिटिस गोरखाली चिहानले स्मरण गराउने कुरालाई लेखकले प्रस्ट पार्नुभएको छ । त्यसैगरी ब्रुनाईको GRU को आवासगृहमा बसोबास गर्ने सैनिकका परिवारहरूले तरकारी उत्पादन गरी सीप र जाँगरको लागि ख्याती प्राप्त गरेका छन् । ४५ वर्षको लामो अवधिसम्म ब्रिटिस सेनामा नोकरी गर्ने चोखेम्बाको पुर्ख्यौली घर नेपालको तेह्रथुम जिल्ला भए पनि उनको सम्बन्धमा यथार्थ जानकारी प्राप्त गर्न थप अनुसन्धानको खाँचो छ । लेखकले समावेश गर्नुभएका 'Brunei Revolt' ले सम्बन्धित क्षेत्रमा भएका विभिन्न युद्धका घट्नाहरूको सम्बन्धमा सङ्क्षेपमा जानकारी दिन्छ भने अन्त्यमा समावेश गरिएको मले भाषाका शब्दार्थहरूले सम्बन्धित भाषा सिक्न चाहनेहरूको लागि केही सहायता पुग्ने विश्वास गर्न सकिन्छ ।

लेखक श्री तिगेलाले एउटा ज्यादै ठूलो र गहन क्षेत्रमा कलम चलाउनुभएको विश्वास गर्न सकिन्छ । वहाँ बोर्निया परिचयहरूदेखि त्यहाँको विविध क्षेत्रको व्याख्या, गर्दै ब्रिटिस गोरखालीहरूको वीरगाथाको तथ्य उतार्न सफल हुनुभएको छ । यो पुस्तक सानो भएर पनि सङ्क्षेपमा धेरै पक्षलाई समेटेको छ । यो खोजमूलक ग्रन्थ भएकाले आफैँमा पूर्ण नहोला तर यसलाई आधार मानेर थप अध्ययन तथा अनुसन्धान आफ्नो फरक पेशामा कार्यरत रहँदारहँदै यस किसिमको महत्वपूर्ण खोजमूलक पुस्तक प्रकाशन गर्नुभएकोमा श्री तिगेलाजीलाई हृदयदेखि नै बधाई दिन चाहन्छु। पुस्तकबारे सङ्क्षेपमा केही कुरा राख्ने सुअवसर दिनुभएकोमा धन्यवाद दिँदै अझ गहन विषयमा अविरल रूपले कलम चलाउनु हुनेछ भन्ने विश्वास गर्दछु ।

**डा. नारायणप्रसाद सङ्ग्रौला**
इतिहास शिक्षण समिति
त्रि० वि०
पद्मकन्या बहुमुखी क्याम्पस
बागबजार, काठमाडौं



# मेरो भन्नु

आखिर मरेर लानु नै के पो छ र ? मरेर गएका हाम्रा पुर्खाहरूले के नै लिएर गए र ! लाखौँ जुनीपछि प्राप्त हुने भनी विश्वास गरिएको यो जुनीमा गरिबी नियतीका कारण पेट पाल्न घरपरिवार र गाँउघर छोडेर लाहुर हिँडेका हाम्रा पुर्खाहरूले पहिलो र दोस्रो विश्वयुद्ध लगायत अनेकौ युद्धमा सहभागी बन्नु पऱ्यो । आफूले कमाएर घरपरिवार र समाजलाई केही दिनुपर्ने हाम्रो परम्परा संस्कृतिअनुसार केही होला कि भन्ने आशले विदेशिएकाहरू सधैलाई विदेशिनु पऱ्यो । धेरै हाम्रा पुर्खाहरूले घर पर्कन पाएनन् । असङ्ख्यक गोर्खालीहरूको मृत्यु भयो र हजारौँ हाम्रा पूर्खाहरू अपाङ्ग र घाइते भए ।

वास्तवमा समय पनि निष्ठुरी छ । आफ्नो प्राणलाई आहुती दिई आज हामीलाई वीर गोर्खालीको सन्तान बनाउने ती हाम्रा अग्रजहरूको बारेमा हाम्रै समुदाय बीचबाट पर्याप्त खोज अनुसन्धान गरेको देखिँदैन । खोजअनुसन्धानको लागि भएका स्रोतहरूसमेत लोपोन्मुख भइरहेको अवस्थाका कारण कम्तीमा यसलाई थोरै भए पनि जगेर्ना गरौँ भन्ने उद्देश्यले यो थोरै जानकारी जम्मा भएको छ। इतिहासको फाँटमा सिङ्गै छुटेको यो पाटोसम्बन्धी भविष्यमा कसैले कलम चलाउने हिम्मत गरेको सन्दर्भमा यो पुस्तकले एउटा इटा थप्ने काम गऱ्यो अर्थात् टेक्ने खुड्किलोको रूपमा रहन सम्भावनालाई ख्याल गर्दै यो कृति तयार भएको छ ।

भाइ, तपाइँ कलम चलाउने मान्छे । हामी मिलेर ब्रुनाई परिचय पुस्तक निकालौँ भनी प्रस्ताव ल्याउनुहुने आदरणीय जानुका राई दिदीप्रति आभारी छु । दिदीको झकझकाइले गर्दा मैले मेरो भागको काम सुरु गरेँ भने दिदीचाहिँ ब्रुनाईबाट स्वदेश फर्कनुभयो र हाम्रो योजना अलपत्र पऱ्यो । बल्लबल्ल ३ वर्षपछि

निकालौँ भनी प्रस्ताव ल्याउनुहुने आदरणीय जानुका राई दिदीप्रति आभारी छु । दिदीको झकझकाइले गर्दा मैले मेरो भागको काम सुरु गरेँ भने दिदीचाहिँ ब्रुनाईबाट स्वदेश फर्कनुभयो र हाम्रो योजना अलपत्र पऱ्यो । बल्लबल्ल ३ वर्षपछि तिनै लेखहरूलाई सँगालेर यो पुस्तक तयार भएको छ ।

यो पुस्तक प्रकाशन गर्न सहयोग गर्नुहुने सम्पूर्ण साथीभाइहरूप्रति हार्दिक धन्यवाद व्यक्त गर्दछु । वहाँहरू हुनुहुन्छ - सानोठिमी क्याम्पसका एसिस्टेन्ट लेक्चर अमर तुम्याहाङ, रेडियो नेपालका रमेश पौडेल, दुःख गरेर भूमिका लेखिदिनुहुने आदरणीय सर डा० नारायण सङ्ग्रौला, पूर्व गोर्खा मेजर तथा वरिष्ठ रेडियो कार्यक्रम प्रस्तोता किशोर गुरुङ, एस्० पी० गणेश ठाडामगर ।

अन्तमा, पुस्तकहरू हेरेर स्वस्थ सल्लाहसुझाव दिनुहुन हार्दिक अनुरोध गर्दछु ।

**लेखक**



# यसभित्र

# सङ्क्षिप्त बोर्नियो परिचय

विश्वका ठूला टापुहरूमध्ये तेस्रो ठूलो टापु बोर्नियो टापु हो । यस टापुअन्तर्गत इन्डोनेसिया, मलेसिया र ब्रुनाइ पर्दछन्। इन्डोनेसिया र मलेसिया दुबै देशको झण्डै आधा भूभाग यही टापुमा पर्दछ भने सानो मुलुक ब्रुनाइ यही टापुभित्रै अटाएको छ। बोर्नियो टापुको कुल क्षेत्रफल ७,४३,३३० वर्ग किलोमिटर रहेको छ र यो टापु दक्षिणपूर्वी एसियामा पर्दछ ।




धेरै वर्षअघि पश्चिमा डचले उपनिवेश बनाएको बेला राखिएको नाम हो: बोर्नियो । बोर्नियो सिङ्गो देशको नाम नभएर एउटा विशाल टापुको नाम हो । त्यसबेला इन्डोनेसियाले यस टापुलाई कालिमान्तान र मलेसियाले चाहिँ पूर्वी मलेसिया भन्ने गर्दथ्यो । यो टापुलाई उत्तरपश्चिममा साउथ चाइना समुन्द्र र उत्तरपूर्वीमा सुलू समुन्द्र, पूर्वमा सिलेब्स, मेकासर र दक्षिणमा जाभा कारिपाटा समुन्द्रले घेरेको छ। वरिपरि समुन्द्रले घेरेको यस टापुको समुन्द्रपारि उत्तरपूर्वमा फिलिपिन्स पर्दछ । यस टापुको उच्चशिखर माउन्ट किनावालु हो । यसको उचाइ ४ हजार ९५ मिटर रहेको छ। यो शिखर मलेसियाको शावा राज्यमा पर्दछ ।

यस विशाल टापुभित्र अस्तित्वमा रहेका ३ वटा देशहरूमध्ये इन्डोनेसियाको ४ प्रोभिन्सेस १. पूर्वी कालिमान्तान २. पश्चिम कालिमान्तान ३. दक्षिण कालिमान्तान र ४. मध्यकालिमान्तान रहेका छन्। त्यस्तैगरी मलेसियाको दुई ठूला राज्यहरू सारवाक र सावा राज्य पर्दछ। सक्रिय राजतन्त्रात्मक मुलुक ब्रुनाइ यही टापुभित्र



सीमित छ। यस बोर्नियो टापुभित्र विविध धर्मावलम्बीहरू बसोवास गरे पनि यी तिनै देशहरू मुस्लिम धर्मप्रधान मुलुक हुन्।

इतिहासलाई सरसर्ति हेर्ने हो भने मलाका सुल्तान शासनको पतनपछि बोर्नियो टापुका धेरै भू-भाग १५ औं शताब्दीदेखि १७ औं शताब्दीसम्मको स्वर्णयुगमा ब्रुनाइ सुल्तानको साम्राज्यको अधिपत्यमा थियो। उत्तर बोर्नियोमा चाहिँ मले सुलू सुल्तान शासन सन् १४७३ - १८९९ सम्म रह्यो। त्यस्तैगरी नोर्थ बोर्नियो कम्पनी पनि अस्तित्वमा आयो । धेरै घट्नाक्रमपछि कालान्तरमा स-साना भूभाग ब्रुनाइका सुल्तानले पुनः ब्रिटिस शासकहरूबाट लिए ।



१९ औँ शताब्दीको प्रारम्भसँगै व्यापारको निहुँमा विशेषतः सामुद्रिक बन्दरगाह सञ्चालनको सम्झौता गरेर अन्ततः बोर्नियोलाई पश्चिमाहरूले उपनिवेश बनाए । त्यसबेला पूर्वी बोर्नियो डच साम्राज्यको र पश्चिम बोर्नियो ब्रिटिस साम्राज्यको मातहतमा रहन गएको थियो। चाइनिजहरूचाहिँ व्यापारको सिलसिलामा पहिलोपटक पानी जहाजबाट बोर्नियो टापु टेकेका थिए। उनीहरूले काठ, रबर, शिशाको व्यापारमा प्रसस्त आयस्रोत देखेर स-साना व्यापार गर्दै गए र यही बसोबास गर्न थाले ।

दोस्रो विश्वयुद्ध (सन् १९४१ - १९४५) अवधिमा जापानले बोर्नियोलाई नियन्त्रणमा राख्यो । त्यसबेला उनीहरूले अत्यधिक मात्रामा स्थानीयवासी तथा अगुवा बुद्धिजीवीहरूको हत्या गर्नुको साथै साम्बास कालिमान्तानमा रहेको मले राज्यको शासक र शासन समेत हटाए ।

इन्डोनेसियामा फैलिएको कम्युनिस्टहरूले सिङ्गो बोर्नियोलाई नियन्त्रण गर्न कोसिस गरे । त्यो विद्रोहको कारणले मलेसिया र इन्डोनेसियाबीच सन् १९६२ देखि १९६६ सम्म युद्ध चल्यो। त्यसताका फिलिपिन्सले पनि बोर्नियो टापुको उत्तरी भाग ब्रिटिस नोर्थ बोर्नियो अर्थात् हालको शावा राज्यलाई आफ्नो अधिकारको क्षेत्र भनी दावी गर्‍यो र त्यसैको कारण मलेसियाको युद्ध फिलिपिन्स सँग पनि चल्यो । अन्य स-साना टापुहरूको विषयमा पनि उनीहरू बीच लामो समयसम्म विवाद रहिरहयो । अन्तर्राष्ट्रिय अदालतमा समेत लामो समयसम्म मुद्दा चल्यो ।



भूमध्यरेखादेखि नजिक पर्ने भएकोले यस टापुमा घना, अनकन्टार जङ्गल हरू पाइन्छन् । बढी आद्रतायुक्त ओसिलो र गर्मी हावापानी भएकोले यस विशाल टापुमा १५ हजारभन्दा बढी प्रजातिका बोटविरुवाहरू पाइन्छन् । त्यस्तैगरी ४ सय २० भन्दा बढी प्रजातिका पक्षीहरू पाइन्छन् । यहाँको बोटविरुवाको पात कहिल्यै पनि पूरै झर्दैन र सदाबहार हरियाली रहिरहन्छ। बोटविरुवा,

घनाजङ्गल र पशुपक्षीको लागि यो टापु अत्यन्तै धनी छ। समतल भूभाग बढी भएको यस ठाउँको जङ्गलमा हात्ती, गैंडा र चितुवाहरू पनि पाइन्छन्। यहाँको जङ्गलमा धेरै दलदल भू-भाग हुने भएकोले जङ्गल यात्रामा ज्यादै होसियारी अपनाउनु पर्दछ। यस बोर्नियो टापुमा पाइने बोटविरुवामध्ये अर्किट फूल एउटा आकर्षण हो।



यस टापुको मुख्य आयस्रोत काठ निर्यात हो। त्यसैले यहाँ अत्यधिक काष्ठ उद्योग सञ्चालन भएका छन्। घनाजङ्गलहरू दिनानुदिन मासिँदै गएका छन्। यद्यपि मलिलो माटो र गरम हावापानीको कारण चाँडै बोटविरुवाहरू बढने हुर्कने गर्दछन्। प्राप्त तथ्याङ्कअनुसार विश्वको कुल काठ निर्यातमध्ये झण्डै आधा निर्यात बोर्नियो टापुबाटै हुने गरेको छ। विशेषतः इन्डोनेसियाको कालिमान्तानमा बढेको जनसङ्ख्याको ठूलो चापको कारण धेरै जङ्गल मासिँदै गएको छ। कालिमान्तानमा भूमिहीन बन्न पुगेकाहरूले सन् १९६० र ८० को दशकमा व्यापक वन फडानी गरी खेती गर्दै आएका छन्। यहाँ उच्च तापक्रम, पानी र असल



माटोको कारण प्रायः सबै प्रकारको खेती हुने गर्दछ। त्यस्तैगरी पामतेलको उत्पादन उल्लेख्य हुने गर्दछ। विश्व आँकडामै सानो देश ब्रुनाइले ४.५ प्रतिशत प्राकृतिक ग्यास उत्पादन गर्दछ। ग्यास र तेल ब्रुनाइ, मलेसिया र कालिमान्तानमा ठूलो



मात्रामा उत्पादन हुने भएकाले यो विशाल टापुको विशाल आयस्रोत छ भन्न सकिन्छ।

विविधताले भरिपूर्ण यस बोर्नियो टापुलाई विभिन्न प्रकारका धर्म, जाति, संस्कार र संस्कृतिले इन्द्रेणीझैं रङ्गीन र आकर्षक बनाएको छ। यस टापुभित्र ३० भन्दा बढी सम्प्रदायहरू बसोबास गर्दछन्। कुनैकुनै जातिहरू भने थोरै सङ्ख्यामा भएकाले लोपोन्मुख छन्। यहाँका मुख्य आदिवासीहरू कायान, कायथ, पुनानभा पेनान, इवान, ढुसुन, विडायू, मिलानू, कारजान हुन्।

आर्थिक र प्रशासकीय क्षेत्रमा सारवाक, सावा, ब्रुनाइ र लाभुवानलाई सरसर्ती हेर्ने हो भने प्रशासकीय क्षेत्रमा

मले जातिको बर्चश्व छ र व्यापारिक क्षेत्रमा चाइनिजहरूको दह्रो अधिपत्य रहेको छ ।

बोर्नियो टापुभित्रका कतिपय ठाउँहरूको नाम प्राचीन संस्कृति भाषाबाट रहेको पनि पाइन्छ । जस्तैः ब्रुनाइ शब्द संस्कृत शब्द हो भनी दावी गरिएको छ । हिन्दू संस्कृतिको उद्‌गमस्थल उत्तरपूर्वी बोर्नियोमा भएको समेत चर्चा पाइन्छ । यद्यपि यस टापुमा हिन्दू धर्मालम्बीहरूको सङ्ख्या नगण्य रहेको छ । यहाँ मुख्य गरी मुस्लिम, क्रिस्चियन, बुद्ध र कन्फुसियस धर्मावलम्बीहरू पाइन्छ ।

एउटा सुन्तलालाई ३ भाग लगाएझैं बोर्नियोको सबैभन्दा धेरै भाग इन्डोनेसियालाई, त्यसपछि मलेसियालाई र सबैभन्दा थोरै ब्रुनाइको भागमा रहेको छ । प्राकृतिक सुन्दरता, प्राकृतिक आयस्रोत तेल ग्यासको मुहान रहेको यस बोर्नियो टापुलाई कालिमान्तानका कम्युनिस्ट विद्रोहीहरूले देखेको सपनाझैं एउटै सिङ्गो देश भइदिएको भए यो टापुको अथाह सम्पति यही टापुमा लगानी हुने थियो र वर्तमान बोर्नियोको बेग्लै गौरवशाली चिनारी बन्न सक्थ्यो भनी अनुमान गर्न सकिन्छ । राजनैतिक रूपबाट ३ भागमा विभाजित यो टापुको कथा निक्कै रोचक पनि छ ।

इतिहासमा कुनै धर्म नमान्ने इवान, ढुसुन जातिहरू पछिल्ला समयमा ब्रिटिस र डचको औपनिवेशिक शासन र शोषणसँगै क्रिस्चियनमा रूपान्तरित भएका छन् । यी क्रिस्चियन धर्मालम्बीहरूको निवासस्थान मुख्य गरी सारवाक र सावा हो । यी दुई राज्यसँग ठूलो आयस्रोत छ । त्यो आयस्रोतको ठूलो हिस्सा मलेसियाको राजधानी क्वाललम्पुरलाई उनीहरूले बुझाउनुपर्छ तर क्वाललम्पुरले चाहिँ त्यो पैसा गाउँगाउँमा मुस्लिमहरूको मस्जिद बनाउन खर्च गर्दछ भनी स्थानीयवासीहरू गुनासो र आक्रोस पोख्छन् । यो घट्नाले राजनैतिक तनाव बढ्दै गएको देखाउँछ ।

इन्डोनेसिया र मलेसियाबीच रहेको लामो सीमा सम्बन्धका कारण बारम्बार सीमा विवाद हुने गरेको छ । सार्वभौम इन्डोनेसिया, मलेसिया र ब्रुनाइको सिमाना घट्नेबढ्ने सवालमा र शासन शक्तिको सवालमा एउटा बेग्लै



समूहको नाम आउँछ त्यो होः गोर्खा । यहाँ रोचक पक्ष के छ भने दोस्रो विश्वयुद्ध, त्यसको लगतै चलेको मलाया इमर्जेन्सी सन् १९४८ - १९६० र इन्डोनेसिया र मलेसियाबीचको मलाया कन्फ्रन्टेसन सन् १९६२ - १९६६ मा गोर्खालीहरूको सहभागिता रहेको थियो ।

त्यस्तैगरी सानो र सार्वभौम ब्रुनाइ देश र राजा सुल्तान बचाउनको लागि पनि गोर्खालीहरूको प्रत्यक्ष र परोक्ष संलग्नता थियो । यदि त्यसबेला ब्रिटिस गोर्खाली सिङ्गापुरमा नभइदिएको भए आजको ब्रुनाइ देश रहने थियो या थिएन अनुमान गर्न सक्छौं । वर्तमानको ३ स्वतन्त्र र अभिभाज्य राज्यहरू हुनको लागि इतिहासमा महत्वपूर्ण स्थान ओगट्ने व्यक्ति तथा शक्तिहरूको नाम लिनु पर्दा उत्तर कालिमान्तान जनसेना (North Kalimantan People Army (PARAKU) र सारवाक जनमिलिसिया ग्रुप (Sarawak People's Gurilla Forces (PGRS) साथै राजनैतिक पार्टी (Party Rakyat Brunei) का नेता डा. अजहरी (Dr. Azhari) को नाम अग्रस्थानमा आउँछ ।

तत्कालीन इन्डोनेसियाका साहसिक र कुशल शासक सुकार्नोको लोकप्रियतालाई देखेर अब संसारको शक्ति दक्षिणपूर्वी एसियामा हुने भो' भनी एकसमय पश्चिमाहरू तर्सेका पनि थिए रे । तर आज पनि बोर्नियोको अवस्था चित्त मात्र बुझाउन सकिने स्थितिको रहेको छ । भौगोलिक धरातल र आयस्रोतको आधारमा बोर्नियो कुनै दिन संसारकै लोकप्रिय ठाउँ बन्न सक्छ भनी आशा गर्न सकिन्छ । संसारका धेरै सुन्दर भूभागमध्ये बोर्नियो टापु एक हो । यो विशाल टापु अन्य टापुहरूभन्दा बेग्लै प्रकारको रोचक र आकर्षक छ । त्यसैले जीवनमा एकपटक घुम्न जानैपर्ने ठाउँ होः बोर्नियो ।

# ब्रुनाईमा गोर्खाली किन र कसरी ?

पूर्वी नेपालको छथर, ओखे - ७ तेह्रथुममा वि० स० १९९५ साल वैशाख २६ गते जन्मनु भएका भूतपूर्व गोर्खा क्याप्टेन गजरधन तिगेला लिम्बू सन् १९५४ सालमा दार्जिलिङको जलपहाडबाट सिधै ब्रिटिस गोर्खा सेनामा भर्ती हुनु-भएको थियो। 2nd 7GR मा सेवा गर्नु भएका श्री लिम्बू मलाया इमर्जेन्सी, ब्रुनाइ बिद्रोह र बोर्नियो कन्फ्रन्टेसनमा प्रत्यक्ष सहभागी हुनु भएको थियो।






त्यसबेला वहाँ एसल्ट पायोनियरको बोटअप्रेटर (Assault Pioneer Boat Operator) को काम लान्सकर्पोरल भएर गर्नु भएको थियो। वहाँको नम्बर २११४०६४९ थियो र पछि वहाँ क्याप्टेन दर्जामा (क्याप्टेन नम्बर ४९४१६२) सन् १९८२ मा सेवा अवधि पूरा गरी पेन्सनर जानुभएको थियो। नेपालबाट बेलायत आउनुभएको वेला मेकाइन्जी ड्राइभ, सर्नकिल्फमा वहाँसँग भेट भएको थियो। प्रस्तुत छ वहाँसँगको वार्तामा आधारित लेख:

१. **मलाया इमर्जेन्सी (Malayan Emergency 1948-1960)** दोस्रो विश्वयुद्धका जर्मनी, इटाली, जापान गुटमध्ये एसियामा चाहिँ जापान लड्ने भयो। १९४१ मा जापानले इन्डोनेसिया, मलाया र वर्मा विजय गऱ्यो। पश्चिममा जर्मन र इटालीले हात उठाए। त्यसपछि जर्मनी र इटालीलाई जित्ने ती फौजीहरू फुर्सदी भए र तिनीहरूलाई जापानविरुद्ध लड्न बर्मामा लगिए। आसामको सिमानानजिक पर्ने इम्फाल (Imphal) भन्ने ठाउँसम्म जापानिज युद्ध लड्दै आइपुगेका थिए र तिनै फौजहरूले त्यहाँबाट जापानिजहरूलाई खेदाए। मलायन जातीय मुक्ति आर्मीका कमान्डर चिन पेङ (Chin Peng) ले मलायामा अर्ध-सिभिलहरूलाई पनि जापानविरुद्ध लडाइँ गर्ने बनाए। उनीहरूलाई हातहतियार ब्रिटिसले दियो। अर्ध-सिभिलहरूलाई जापानविरुद्ध लडेर जितेको खण्डमा स्वतन्त्रता दिने भनेर ब्रिटिसले मलायन जातीय मुक्ति आर्मीसँग सम्झौता गऱ्यो। लडाइँ घमासान चलिर हेको बेला जापानमा २ वटा ठू-ठूला एटमबम नागासाकी र हिरोसिमामा हानेपछि उता जापानले पनि हात उठायो। त्यतिबेला चाइनामा कम्युनिस्ट क्रान्ति भइरहेको थियो। सन् १९४८-१९४९ चिन पेङलाई चाइनाका कम्युनिस्टबाट पनि सहयोग आयो। त्यसबेला कम्युनिस्टलाई ब्यान्डिट (Bandit / बदमास) भन्दथ्यो।



जापानले हात उठाएपछि उनीहरूको हतियार ब्रिटिसलाई बुझाए तर ती चिन पेङ मिलिशियाहरूले चाहिँ हतियार ब्रिटिसलाई बुझाएनन्। पहिले आशा देखाएअनुसार राज्य ब्रिटिससँग मागे। मलाया मले जातिको भएकोले ती चाइनाबाट आएका चिन पेङलाई राज्य दिन

नमिल्ने भनी ब्रिटिसले राज्य दिएन । तब चिन पेङ समूहले बिद्रोह गर्ने घोषणा गऱ्यो र सन् १९४८ को सुरुवातमै हतियार उठाए ।

त्यसबेला गोर्खाली ६ वटा (1st 2nd, 2nd 2nd, 1st 6th, 2nd 6th, 1st 7th, 2nd 7th, 1st 10th, 2nd 10th पल्टन मलायामा राखिएको थियो र ८ वटा पल्टनलगायत 2nd 10GR हङकङमा एकै समयमा ल्याइएका थिए । गोर्खालीहरू मलाया, हङकङ आउनुअघि भारतको कोइटा, सिलाङ, पलामपुर र देहरादुनमा थिए । त्यसबेला गोरखपुर, लखनउ चाहिँ ट्रान्जिट क्याम्प मात्र थियो । ब्रिट्रिसले छुटाएर मलाया ल्याउने समयमा भारतमा चाहिँ 1st, 3rd, 4th, 5th, 8th, 9th रेजिमेन्ट रह्यो । त्यस समय एउटा रेजि- मेन्टमा २ वटा वटालियन मात्र हुन्थे । ब्रिटिसले मलायामा जम्मा ४ रेजिमेन्ट अर्थात् ८ वटा वटालियन ल्यायो । भारतमा रहेको छ वटा रेजिमेन्टअन्तर्गत


क्याप्टेन गजरधन

१२ वटा वटालियन रह्यो । ब्रिटिस र भारत छुट्टिएपछि भारतमा 11GR स्थापना गरे । त्यसपछि भारतमा 11GR भित्र 6 वटा वटालियन बन्यो 1st 11GR, 2nd 11GR, 3rd 11GR, 4th 11GR, 5th 11GR, 6th 11GR, 7th 11GR रहेको छ । चिन पेङ समूहहरूले जङ्गलमा लडाइँ गर्न जापनिजहरूसँग लड्दालड्दै सिकेका थिए । अङ्ग्रेजले कबोल गरेअनुसार स्वतन्त्र राज्य नदिएपछि चिन पेङहरू ब्रिटिसविरुद्ध लडाइँ लडे । चिन पेङसँगको लडाइँ जित्न ब्रिटिसले जङ्गलनजिकको गाँउबस्ती उठाएर लगी उनीहरूलाई खानपिनको सम्पर्क टुटाई दिएका थिए । चिन



पेङहरूलाई जङ्गलबाट बाहिर निस्कन भनी सानो हवाइजहाजबाट पर्चाहरू प्रसस्त खसाले । त्यो पर्चा मले भाषामा, चाइनिज भाषामा, अङ्ग्रेजी भाषामा र तमिल भाषामा लेखिएको थियो । जङ्गलबाहिर निस्किएमा विभिन्न अवसरहरू दिन्छौँ भन्ने आशा देखाउँदै माइकबाट पनि आव्हान गरे । त्यसपछि धेरैजसो चिन पेङ समूहहरू जङ्गलबाट निस्किए । कतिपय जङ्गलभित्रै मरिसकेका थिए । जोजो निस्किए नेताहरूलाई चाहिँ थुनिदिए र कतिपयलाई जागिर दिए । यसरी चिन पेङ समूह कम्जोर बने तर बिद्रोहका नेतृत्व गर्ने चेम्पिङ कहाँ गए पत्तै भएन । जबसम्म जङ्गलभित्र ती चिन पेङ समूह रहन्थे त्यसबेला त्यस जङ्गल इलाकालाई Black Area भनिन्थ्यो र सन् १९५६, ३१ अगस्टमा स्वतन्त्रता (मेरेदेक्का) दियो र सन् १९५८ मा मलायालाई White Area घोषणा गऱ्यो । त्यसपछि मात्र गोर्खाली सेनाले हतियार कोतमा राख्न थाले । फाट्टफुट्ट स-सानो लडाइँ भने १९६० सम्म चली रह्यो । यही १९४८ - १९६० सम्मको युद्धलाई मलाया इमर्जेन्सी भनिन्छ । त्यसबेला प्राप्त तथ्याङ्कअनुसार १६९ गोर्खालीले ज्यान गुमाएका थिए ।

## २. **बुनाई विद्रोह (Brunei Revolt )**

१९६२ डिसेम्वर ८ मा ब्रुनाइका राजा ओमार अलि सेरियानजिकको दरबारमा (स्ताना) छुट्टी मनाउन आएको मौका छोपी विद्रोही नेता यासिन अफन्डीले विद्रोह गरी राजा र राजपरिवारलाई कब्जामा लिए । त्यो समाचार सिङ्गापुरस्थित ब्रिटिस काउन्सिलमा आइपुग्यो र त्यसपछि तुरुन्त २४ घण्टाभित्र 1st 2nd GR को एक कम्पनी आन्दुकी एयरपोर्ट ब्रुनाइमा ओर्लिए र राजालाई विद्रोहीको कब्जाबाट छुटाए । बाँकी विद्रोहीहरूलाई दबाउन टुटुङ क्षेत्रमा भिडन्त पनि भयो । त्यसपछि पुनः अर्को कम्पनी पनि सिङ्गापुरबाट तेम्ब्रुङको बङ्गारमा ओर्लिए । बङ्गारमा internal security (S) parade भइरहेको अवसरमा विद्रोहीहरूलाई "तिमीहरू जङ्गलबाट फर्क, घरघर जाऊ" भन्ने आव्हान गर्दैगर्दा बङ्गारको फुटबल मैदानमा अकस्मात विद्रोहीहरूले गोली हानेर एक अङ्ग्रेज अफिसरलाई मारिदिए र गोली हानाहान हुँदा त्यही २ जना गोर्खालीहरूले पनि वीरगति प्राप्त गरे । त्यसपछि त्यहाँ लडाइँको विधिवत सुरुवात भयो । त्यो लडाइँ त्यही वर्षको

जनवरी, फेब्रुवरीसम्म चल्यो । अजहरीदेखि मुनिका नेता यासरी एफेन्डी र पैसा बाँडफाँड मिलाउने ओसमानचाहिँ बन्दारको नजिक काम्पुङ बारुबारूमा लुकिछिपी बसेका छन् भन्ने सूचना प्राप्त भयो । त्यसैबेला 2nd 7GR हङकङबाट सिङ्गापुर र सिङ्गापुरबाट ब्रुनाइ आइपुग्यो र अप्रेसनको जिम्मा 1st 2nd GR बाट लियो त्यसपछि 2nd 7GR को B Coy काम्पुङ बारुबारूमा गएर विद्रोहीहरूलाई घेराहाली "हात उठाउ" भने तर उनीहरूले उठाएनन् र गोली हानाहान चल्दा उनीहरूको तर्फ ६, ७ जना मान्छे मारिए । त्यसपछि मात्र ती नेताहरूलाई पक्डेर जेल चलान गरियो । यसरी एकप्रकारले तत्कात ब्रुनाइको समस्या समाप्त हुन्छ । त्यही गोर्खालीको गुनले गर्दा सन् १९६४ बाट ब्रुनाइ सर कारको मातहतमा रहने गोर्खा रिजर्भ युनिट GRU सुरुवात भएको थियो । भनिन्छ राजा ओमारले आफ्नो राज्यसत्ता छोरा सुल्तानलाई हस्तान्तरण गर्दा गोर्खालीको गुन नविर्सनु भनेर सम्झाएका पनि थिए रे ।

### ३. **बोर्नियो लडाइँ (Borneo confrontation 1963-1966)**

ब्रुनाइमा भएको विद्रोहमा हार भएपछि यासिन अफन्डी इन्डोनेसिया प्रवेश गरेर त्यहाँ पनि उनले जनतालाई सङ्गठित बनाए र अङ्ग्रेज मातहतमा भएको सारवाकलाई इन्डोनेसियाको मातहत हुनुपर्ने भनेर उक्साए । इन्डोनेसियाले सारवाकलाई आफ्नो मातहतमा हुनुपर्ने दावा गर्न थाले र मलेसियाले पनि आफ्नो भनी दावा गर्न थाल्यो । सन् ३१ अगस्ट १९५७ मा मलायालाई स्वतन्त्रता दिइसकेको र सारवाकचाहिँ ब्रिटिसको लागि काठ निकास गर्ने सबैभन्दा राम्रो ठाउँ भएकोले अझै ब्रिटिस मातहतको मलेसियाअन्तर्गत थियो । आपसमा दावा गरागर भयो र अन्ततः लडाइँको लागि ब्रिटिसले गोर्खाली सेनालाई लिएर मलेसिया मातहतबाट लडाइँ लड्ने सहमति गऱ्यो । मलायालाई भर्खरै मात्र स्वतन्त्रता दिएको र अझै पनि ब्रिटिसको सुरक्षा चाहिँने अवस्था भएकोले ब्रिटिसअन्तर्गतका गोर्खाली लड्न पुगे । कुचिङ, पादुवान्, टेभेडो, लङपसिया, लङसमाडो, लिम्वाङमा गोर्खालीहरू पुगे र ती ठाउँहरू इन्डोनेसियाको सिमानानजिक थियो । त्यसबेला ब्रिटिस गोर्खा लड्न सिमानाभित्र पुग्थे र फर्कन्थे र इन्डोनेसियनहरू पनि आक्रमण गर्न गोर्खा भएका ठाउँमा लड्न आउथे जान्थे । लड्दालड्दा पछिपछि इन्डोनेसियनहरू आउनै छाडे । त्यसबेला एउटा ग्रिनेट, मोटर बम इन्डोनेसियाउपर पड्काएवापत झण्डै २० पाउन्ड स्टर्लिङ मलाया सरकारसँग असुल्ने गर्दथ्यो ।

लडाइँमा धेरै खर्च हुने र धेरै पैसा ब्रिटिसलाई दिनुपर्ने भएकोले अन्ततः इन्डोनेसिया र मलायाबीच सन् १९६६ को जुन महिनासम्म चलेको लडाइँ रोक्ने सम्झौता भयो । लामो समय चलेको युद्धमा झण्डै ६०-६५ जना गोर्खालीको मृत्यु भएको थियो । त्यसबेला मृत्यु भएकाहरूलाई सिङ्गापुरको उलुपन्डान र मलेसियाको सेरम्बानको सिमेट्री (चिहान क्षेत्र) मा राखिन्थ्यो । पछिबाट उलुपन्डानका चिहानहरू पूरै नष्ट गरेर उनीहरूको नाम शिलालेखमा राखिएको छ र उक्त ठाउँमा अहिले घरहरू बनेका छन् । उक्त बोर्नियो कन्फ्रन्टेसनका अप्रेसन कमान्डर Maj Gen Wc Walker थिए र पछि उनी General



पनि बने । उक्त लडाइँमा प्रतिव्यक्ति, प्रत्येक दिनको ३ मलायन डलर अर्थात् हाल मलेसियन रिङ्गिट गोर्खालीलाई मलाया सरकारले दिनेमध्ये १ रिङ्गिट बराबरको खानपीनचाहिँ उपलब्ध गराउने गर्थे । त्यसबेला गोर्खालीहरू जोहरबारू, कुलाङ, मलाका, इपो सिङ्गापुरको सिलिम ब्यारेक र हङकङमा रहेका थिए । प्रत्येक ६, ६ महिनामा लडाइँ जाने पालो (अप्रेसन टुर) रहने गर्थ्यो र सबै ४ रेजिमेन्टका ८ वटालियनका झण्डै ९० हजार गोर्खालीले उक्त कन्फ्रन्टेसनमा पालैपालो भाग लिएका थिए । त्यसैबेला लान्सकर्पोरल रामबहादुर लिम्बूले



**भी०सी० रामबहादुर लिम्बू**

ब्रिटिसको सबैभन्दा ठूलो बहादुरी VC प्राप्त गरेका थिए । जब बोर्नियो युद्ध समाप्ति भयो, त्यसपछि (PDR = Pension Discharge Returndncy) घर फर्काउने क्रम सुरु भयो । त्यसबेला झण्डै ८ हजार गोर्खाली-हरूलाई घर फर्काइए । ती ८ हजार सङ्ख्या घट्नुको कारण ४ वटा वटालियन मात्र सीमित रह्यो । त्यसबेला गोर्खालीहरूको संरचनामा ठूलो परिवर्तन भयो । सन् १९६१ मा मलेसियाबाट सम्पूर्ण गोर्खालीहरू हटाइयो र एक वटालियन ब्रुनाइमा लगेर राखियो, एक वटालियन युकेमा र बाँकी हङकङमा लगेर राखियो । यी यावत लडाइँ सँगसगै सारवाक, सावा र क्वालालम्पुर क्षेत्र एकीकृत भएर हाल मलेसिया बनेको छ । मलेसियामा केही नेपाली बस्ती रहेको भए पनि गोर्खाली रेजिमेन्ट हाल कुनै पनि त्यहाँ छैन्न ।

***स्रोतहरू:***


– *www.regiment.org*
– *www.en.wikipedia.org*
- *क्या. गजरधन तिगेला लिम्बू*

# मनै लोभ्याउने लाभुवान टापु



मलेसियाको १३ वटा राज्य र ३ अर्ध स्वायत्त राज्यमध्ये एक लाभुवान हो। जम्मा ७ वटा स-साना टापुहरू मिलेर बनेको लाभुवान सन् १९८४ अक्टोबर १९ मा स्वायत्त बनेको हो। यस राज्यको कुल क्षेत्रफल ९२ वर्ग कि० मि० रहेको छ भने जनसङ्ख्या सन् २००० को तथ्याङ्कअनुसार ७८



हजार रहेको छ। १८ औं शताब्दीको अन्त्यसम्म ब्रुनाइ राज्यको मातहतमा रहेको यस टापुलाई दोस्रो विश्वयुद्धको वेला सन् १९४१ देखि १९४५ सम्म जापानले नियन्त्रणमा लिएको थियो। उनीहरूले यस टापुलाई पुनः माइडा टापु नामकरण पनि गरेका थिए तर सन् १९४५ मा अस्ट्रेलियन सेनाले यो टापुलाई उनीहरूको नियन्त्रणबाट फर्काएका थिए। सामुन्द्रिक इलाकाबाट तेल, ग्यास उत्पादन तथा कारोवार, पानीभित्र खेलिने डाइभिङ, खुल्ला व्यापार र अत्यधिक पर्यटकहरूको आगमनले यो सुन्दर टापु आर्थिक केन्द्रको रूपमा विकसित हुँदै गएको छ।

दोस्रो विश्वयुद्धमा सहभागी भएका ८ गोर्खा राइफल्सका राइफलम्यान कालीवहादुर थापा (८६१२२) को २३ वर्षको उमेरमा सन् २५ मे १९४६ का दिन मृत्यु भएको कुरा लाभुवान टापुमा रहेको अस्ट्रेलियन सिमेट्री (चिहान) मा रहेको निजको चिहानमा भएको शिलालेखले स्पष्ट पार्दछ। दोस्रो विश्वयुद्धताका जापानविरुद्ध अस्ट्रेलियन र ब्रिटिस सेनाले यस टापुमा युद्ध गरेका थिए। उक्त युद्धमा अरू धेरै गोर्खालीहरूको मृत्यु भएको भए पनि हाल निज कालीवहादुरको मात्र चिहान देख्न सकिन्छ। स्वर्गीय कालीवहादुरको चिहान् हुनुले लाभुवान टापुलाई गोर्खालीहरूको लागि ऐतिहासिक ठाउँ मान्न सकिन्छ। यस अस्ट्रेलियन सिमेट्रीमा सयौं अस्ट्रेलियन सिपाहीहरूको चिहान राखिएको छ भने कतिपय इन्डियनहरूको पनि छ। इस्टइन्डिया भारतीय गोर्खाली सेना र ब्रिटिस गोर्खाली छुट्टिनुअघि यो युद्ध भएको हुनाले स्व. कालीवहादुर तत्कालका भारतीय गोर्खाली रहेको अनुमान गर्न सकिन्छ।

यो टापु मलेसियाको सावा राज्यनजिक रहेको छ। लाभुवान टापु सानो, ज्यादै सुन्दर र अत्यन्तै रमाइलो ठाउँको रूपमा परिचित छ। लाभुवानको पर्यटकीय एवम् व्यापारिक विकासको लागि मलेसिया सरकारले भिन्न प्रसासकीय कानुन लागु गरेको छ। यहाँ कुनै पनि वस्तुमा कर, भ्याट लगाइँदैन। ब्रुनाइबाट लाभुवान जाने गोर्खालीहरूलाई भिजाको आवश्यकता पर्दैन। किनमेल गर्न र छुट्टी मनाउन सस्तो ठाउँको रूपमा लाभुवानलाई लिइन्छ। गएको दशक यस टापुको पनि धेरै ठू-ठूला विकास भएको छ। टाढाटाढाबाट पर्यटक आउने ठू-ठूला खेलकुद विशेष समुन्द्रसँग सम्बन्धी खेलहरूको आयोजना हुने भएकाले यो ठाउँ निक्कै महत्वपूर्ण र लोकप्रिय बनेको छ। यस टापुको रात्रि जीवन निक्कै मनोरञ्जनपूर्ण हुने गर्दछ। यस टापुको प्रशासकीय क्षेत्रमा मले जातिको बाहुल्य रहे पनि आर्थिक क्षेत्रमा चाइनिज जातिको उपस्थिति वलियो रहेको छ। ब्रुनाइबाट पानीजहाजमा करिब १ घण्टाको यात्राबाट पुगिने यस टापुमा सामुन्द्रिक व्यापार पनि निक्कै फस्टाएको छ। यस टापुमा इन्डोनेसिया, फिलिपिन्सका कामदारहरू धेरै रहेका छन्। छोरीमान्छेले लगाउने लुगा लुङ्गी किन्ने र काठका हस्तकला किन्ने मुख्य बजारको रूपमा पनि हामी चिन्न सक्छौ। सुन्दर सामुन्द्रिक तट साथै सिफुड र मिठो वियरको लागि लोकप्रिय लाभुवान एकपटक जाने हो कि ?

# भौतिक र आर्थिक प्रगतिको सहर मिरी



केही वर्ष अघिसम्मका पुराना घर त्यहाँ छैनन् । केही समयअघिका साँघुरा रोडहरू पनि त्यहाँ छैनन् । हिजोका स-साना सपिङ सेन्टरहरूले



पूरै रूप बदलेका छन् । हो, शिक्षाको विकाससँगै आर्थिक र भौतिक प्रगति भएको छ । मलेसियाको सबैभन्दा ठूलो सारवाक राज्यको हावापानी भूमध्यरेखानजिक भएकाले गर्मी छ । यो राज्यको दोस्रो ठूलो सहर मिरी अल्छीलाग्दो थियो तर आज मिरीलाई मलेसियाको एक विकसित सहरको नमुनाको रूपमा लिन सकिन्छ ।

यो सहर मिरी जिल्लाको सदरमुकाम हो । यद्यपि भर्खरै मात्र सन् २००५ मे २० का दिन सहरको मान्यता पाएको थियो । सारवाक राज्यमा सर्वप्रथम १९ औँ शताब्दीको सुरुमा तेल र ग्यास पहिलोपटक पत्ता लागेको ऐतिहासिक ठाउँ पनि हो । हाल २ लाख ८० हजार जनसङ्ख्या रहेको यस सहरको मेयर डाटो वी हान वीन हुन् । उनी चाइनिज मूलका इतिहासमै पहिलो मेयर हुन । डाटो मेयर बनेपछि मिरी नगरपालिकाको विश्वास नै गर्न नसकिने गरी तीव्र विकास भएको छ । यसको श्रेय उनैलाई दिन मिरीबासीहरू रुचाउछन् ।



हिजो रबर खेती, पामतेलले चिनिने मलेसिया उद्योग धन्दामा फड्को मारेको देशको रूपमा चिनिन् थालिएको छ । सिङ्गो मलेसिया २ भागमा बाँडिएको छ; जसमध्ये क्वाललम्पुर र बोर्नियो टापु क्षेत्र पर्दछन् । यी दुई इलाकालाई दक्षिण चाइना समुन्द्रले बीचमा छुट्याएको छ । मलेसियाको १३ राज्यहरूमध्ये सबैभन्दा ठूलो राज्य यही सारवाक हो र यो राज्य बोर्नियो क्षेत्रअर्न्तगत पर्दछ । यहाँका भू-बनावट डाँडाकाँडा घनाजङ्गल भए पनि समग्रमा समतल धरातल र समुन्द्रतटीय रहेको छ ।

यहाँका जङ्गल सदावहार हरियाली हुन्छन् । यहाँको आधुनिक कृषि फार्म, तेल, ग्यास उत्पादन, काष्ठ उद्योग र पर्यटन मुख्य आयस्रोत

हो । नजिकैको सानो देश ब्रुनाइ जसलाई चारैतिर मलेसियाले घेरेको छ । ब्रुनाइका नागरिकलाई समेत सबैभन्दा नजिक, किनमेललाई सजिलो, सुविधायुक्त सहर भएकाले भौतिक क्षेत्रमा विश्वास नै गर्न नसकिने गरी मिरी सहरको प्रगति र विकास भएको छ ।



मिरी सहरको नजिक ठू-ठूला सुविधायुक्त बस्तीहरू बसाइएका छन् । यस ठाउँका बसोवास गर्ने जातिहरू मले, चाइनिज, इन्डियनलगायत आदिवासी जातिहरू डायक, विडायक इवान, मिलाना, कायान, कान्या, किलाविट, ढुसुन, मुरुत, कारजान, पेनान हुन् । दोस्रो विश्वयुद्धताका अत्यधिक भित्रिएका चाइनिज जातिको पनि सहरी



क्षेत्रमा ठूलो बर्चस्व छ । राजनैतिक क्षेत्रमा मले जाति र व्यापारिक क्षेत्रमा चाइनिजहरू अगाडि रहेका छन् । इन्डोनेसियाको दक्षिणी कालिमान्ताङसँग जोडिएकाले भाषिक र धार्मिक समानता छ र यस इलाकामा विदेशी कामदारहरूमा इन्डोनेसियनहरू प्रसस्त रहेका छन् भने फिलीपिनो, बङ्गला, श्रीलङ्कालीहरू केही मात्रामा भेटिन्छन् । नेपालीहरू यहाँ कामका लागि खासै आइपुग्दैनन् ।

ब्रुनाइको सेरियादेखि कार यात्रामा मिरी सहर पुग्न कोलावेलायत पुल, ब्रुनाइ र मलेसिया इमिग्रेसनलगायत बोर्नियो पुल पार गरेर ४५ मिनेटमा पुग्न सकिन्छ। ब्रुनाइमा रहेका नेपालीहरूलाई मलेसिया प्रवेशको लागि सजिलै भिजा उपलब्ध हुने भएकाले धेरै नेपालीहरू किनमेल र छुट्टी मनाउन त्यहाँ जाने गर्दछन्। मिरीका नागरिकहरूले नेपालीहरूलाई गोर्खाली भनेर सम्मानका साथ व्यावहार गर्छन् । मलेसियाको तीव्र विकास भएको राज्यमध्येको सारवाक र सारवाक राज्यको तीव्र विकास भएको सहर मिरीमा विशाल आधुनिक भवनहरू वनेका छन् र बन्ने क्रम तीब्र छ । ठू-ठूला रोडहरू बनेका छन् । अन्तरदेशीय मिरी एयरपोर्ट पनि छ । मिरी सहरनजिक, नेहा गुफा, संसारकै ठूलो मुलू गुफालगायतका रमाइला ठाउँहरू पनि प्रसस्तै छन् । पुग्नैपर्ने सहर मिरी घुम्न हामीसँगै जाउँ हुन्न ?

*०३ अप्रिल ०६, ब्रुनाइ*

# गोर्खाली चिहान र हाम्रो इतिहास





संसारको इतिहासमै अनौठो सम्बन्ध भएको नेपाली नागरिक गोर्खाली र साम्राज्यवादी ब्रिटिसको इतिहास झण्डै २ शताब्दी लामो भइसकेको छ । स्वच्छ हावापानी र उकालीओराली दैनिक जीवन हुने भएकोले प्राकृतिक वरदानस्वरूप हृष्टपुष्ट, स्वस्थ, स्फूर्त र बलिया नेपाली युवाहरू गरिबीका कारण बाध्यतावस वा कतिपय साथीभाइहरूको



लहैलहैमा लागेर वेलायत, भारत, सिङ्गापुर र ब्रुनाइ सरकारको सेवा गर्न पुगेका छन् ।

परिश्रमी हामी नेपालीहरू कामको खोजीमा संसारको कुनाकुनामा पुगेका छौं । यद्यपि नेपाल-वेलायत, नेपाल-भारत, नेपाल-ब्रुनाइ सम्बन्धको लेखाजोखा गर्दै जानुपर्ने बेला भएको छ । इतिहास आत्मागौरव र पश्चाताप दुवै हुन सक्छ तर गल्ती हुन नदिनु नै हाम्रो धर्म हो । खयर सानो एउटै मात्र कुरा किन नहोस, त्यो इतिहासको लागि राख्न सकियो भने भोलि महत्वपूर्ण दस्तावेज बन्न सक्दछ ।

गोर्खालीहरू पहिलो र दोस्रो विश्वयुद्धमा लाखौँको सङ्ख्यामा सहभागी बनेका थिए । हजारौँ गोर्खालीहरू युद्धमैदानबाट घर फर्किएनन् र घरमा परिवार र छोराछोरीले सधैँ बुबाको प्रतीक्षा गरिरहे । धेरै चेलीहरूले जीवनको अन्तिम क्षणसम्म प्रतीक्षामै बिताए । गाँउटोलले धेरैधेरै प्रतीक्षा गर्‍यो तर ती घर छोडेर परदेशिएकाहरू कहिल्यै फर्किएनन् । नत उनीहरूको हरहिसाब भयो नत अत्तोपत्तो नै । भनिन्छ, मानिसको जुनी पाउन ८५ हजार जुनी फेर्नुपर्छ । बल्लबल्ल आउने मानिसको जुनी सिर्फ एकपटकको हुन्छ । एकपटकको यो जीवन साथीसङ्गीको लागि हुनुपर्छ । घरपरिवारको लागि हुनुपर्छ । आफ्नै गाँउबस्तीको लागि हुनुपर्छ । सधै हाँसीखुसीमा बित्नुपर्छ । विडम्बना हाम्रा ती अग्रजहरू जो केही होला कि भन्ने आसले विदेशिएकाहरू युद्धमैदानमा होमिन पुगे । उनीहरूको लागि आमाबुबा, श्रीमती, छोराछोरी, आफन्त छरछिमेक, गाउँटोल हाँसोखुसी केही भएन । केवल एकमुठी सास पराइभूमिमा छाडे । त्यसैले आज हामीले वहाँहरूप्रति भावपूर्ण श्रद्धासुमन चढाउनैपर्छ, हार्दिक श्रद्धाञ्जली !

बोर्नियो टापुमा गोर्खालीहरूले चरणचरण गरेर धेरै रगत पसिना बगाएका छन् । धेरै गोर्खालीहरूको ज्यान गुमेको छ । उनीहरूलाई हामीले केही दिन नसके पनि सम्झन मात्र सक्यौँ र उनीहरूको चिहानमा एकथुङ्गा फूल मात्र चढाउन सक्यौं भने पनि ती मृत आत्माले थोरै भए पनि शान्ति पाउने छन् ।

सानो देश ब्रुनाइमा गोर्खालीहरूले सेवा गर्दै आएको झण्डै आधा शताब्दी भएको छ । ब्रुनाइ अधिराज्यको कोलाबेलायत जिल्लाको सिभ्युनजिक समुन्द्रको छेवैमा गोर्खाली (Gurkha Cemetry) चिहानहरू देख्न सकिन्छ । लामबद्ध गरी राखिएको ती चिहानहरूमध्ये कतिपयचाहिँ सम्मान र सम्झनास्वरूप राखिएको छ । झण्डै २ सयको हाराहारीमा रहेका ती चिहानहरूले मुख्य गरी वोर्नियोको



सारवाकमा चलेको गुरिल्ला युद्ध र ब्रुनाइमा चलेको विद्रोहको इतिहास बोकेका छन् । त्यस्तैगरी गोर्खाली चिहाननजिकै मुस्लिम र चाइनिजहरूको चिहान पनि रहेको छ । क्रिस्चियन र गोर्खाली चिहान एउटै कम्पाउन्डभित्र रहेको छ । गोर्खाली चिहान इलाकाभित्र हिन्दू, बुद्धिस्ट र किरात सबैलाई एकैठाउँमा राखिएको छ । त्यो निश्चित क्षेत्रलाई कम्पाउन्ड लगाई सुरक्षित बनाइएको छ भने अझ धेरै सुधार गर्न सकिने सम्भावनाहरू त्यहाँ देखिन्छ । स्मारकरूपी चिहानमा नाम, आर्मी नम्बर र मृत्युको मिति राखिएको भए पनि कुन युद्धमा मृत्यु भएको हो ? नेपाल कहाँ वस्ने भनेर उल्लेख छैन । यथासम्भव अझ व्यवस्थित गर्न सकेको खण्डमा सबैको लागि राम्रो हुने थियो । ब्रुनाइमा सेवारत रहेका नेपालीहरूले हिजोआज पनि त्यही क्षेत्रलाई चलाउँदै आएका छन् ।

यी ऐतिहासिक चिहानहरू हामो ज्वलन्त इतिहास हुन् । त्यस्तैगरी लाभुवान, सिङ्गापुर, मलेसियामा पनि थुप्रै गोर्खालीहरूको चिहान रहेको पाइन्छ । बोर्नियो क्षेत्रमा कति गोर्खाली चिहानहरू रहेको छ; आज हामीले खोज र अनुसन्धान गर्न आवश्यक भएको छ । इतिहासमा खोज्नुपर्ने भएको छ । हामीले कति मूल्य चुकायौं र त्यसको बदलामा के के पायौँ ? हामीले ती इतिहासका धरोहरहरू समयमै संरक्षण र संवर्द्धन गर्न सक्यौँ भने ती सधैँ ररिरहनेछ । हाम्रो इतिहास बाँचिरहने छ । अन्यथा कुनै दिन ती चिहानहरूलाई साउथ चाइना समुन्द्रको छालले लैजान सक्छ । त्यसैले हाम्रा मृत अग्रजहरूलाई सम्मान गर्न, नेपाली गोर्खाली रगतलाई सम्मान गर्न, सम्झना गर्न हामी कहिल्यै नछुटौँ र संरक्षरणलाई अझ जागरुक भई निरन्तर लागि रहनुपरेको छ ।

# नेपालीहरूको पर्याय सीप र जाँगर



देश विदेश जहाँ रहे पनि नेपालीहरूको विषेशता सीप र जाँगर हो । अझ भनौं हामी नेपालीहरूको स्वास्थ्य र सौन्दर्य राम्रो सुन्दर



हुनुको कारण परिश्रम गर्नु हो । परिश्रमले पर्याप्त शारीरिक कसरत हुन्छ र प्रशस्त कामको कारण हाम्रो शारीरिक बनावट पनि आकर्षक बन्न पुग्दछ ।

सन् १९६० दशकको सुरूवातसँगै ब्रुनाइस्थित गोर्खा रिजर्भ युनिटको (जी० आर्० यू०) स्थापना भएको हो । कुनै बेला झन्डै २५ सय गोर्खालीहरूले ब्रुनाइ सरकारअन्तर्गत काम गर्ने जि० आर्० यू०मा हाल पनि ठूलै सङ्ख्यामा गोर्खालीहरूले काम गर्दै आएका छन् । आफ्नो जिन्दगीको शतप्रतिशत ग्नरेण्टी, छोराछोरीको निम्ति विशेष सुविधाको अतिरिक्त आकर्षक तलब र आफ्नो गाउँठाउँकै वातावरण भएकोले ब्रुनाइमा धेरै गोर्खालीहरू खुसी साथ सेवारत छन् ।

ब्रुनाइ सरकारको अति संवेदनशीललगायत अन्य ठाउँहरूमा सुरक्षा प्रदान गर्दै आएका जि० आर्० यू० का लाहुरे दाजुभाइको श्रीमतीहरूले अत्यन्तै प्रशंसायोग्य काम गर्दै आएका छन् ।

जि० आर० यू० का न्यु क्वाटरस्थित लगभग १५ वटा जति ठूल्ठूला घरहरू छन् । त्यहाँ झन्डै चारसय जि० आर्० यू० गोर्खा सैनिकहरू अस्थायी बसोवास गर्दै आएका छन् । आकर्षक आवास, नेपाली टिभी (च्यानल नेपाल) साथै ब्रिटिस फोर्सेस ब्रोर्डकाटिङ सर्भिस (बी० एफ्० बी० एस्०) गोर्खा रेडियोनजिकै कक्षा ८ सम्म पढाइ हुने गोर्खा चिल्ड्रेन स्कुल हुनुले यहाँ विलकुलै नेपाली वातावरण छ । श्रीमान्हरू आफ्नो काममा गएको बेला श्रीमतीहरू ब्याटमिन्टन खेल्ने, बास्केटबल खेल्ने, भलिबल खेल्ने, रनिङ गर्ने अतिरिक्त कोही अध्ययन गर्न कलेज जान्छन् भने कोही सब्जी खेती गर्न जान्छन् ।

क्वाटरनजिकै रहेको सब्जीबारीमा गोर्खाली दिदीबहिनीहरू रायो साग, चोइसाम, हरियो पाक्चोय, सेतो पाक्चोय, काइलन, सेलरी र प्याज, खुर्सानीलगायतका सब्जी फलाउँछन् । मलिलो माटो बाह्रैमासे एकछत्र गर्मी हुने भएकोले सानै ठाउँमा पनि धेरै उत्पादन हुने गर्छ । घरमा खाएर उब्रिएका सब्जीलाई बिहान र बेलुकी आउने

सब्जीको ठेकेदारलाई बेच्ने गर्दछन् । ब्रुनाइको राजधानी बन्दरसेरी वेगवानको बीच भागमा पर्ने यस न्यु क्वाटरको सब्जीहरू स्टार होटलदेखि सहरको सब्जी पसलसम्म पुग्ने गरेको छ ।

हिसाबको फायल बोकेर सब्जी बिक्री गर्ने ठाउँमा बस्नुभएकी दिदी खुशीमाया र पुष्पा रानाका अनुसार यहाँ मासिक झन्डै दशहजार ब्रुनाइ डलरको सब्जी बिक्री हुन्छ । सब्जी उत्पादन गर्नुहुने झन्डै एकसय सात घरका दिदीबहिनीहरूले आफैले पालो बनाएका छन् । प्रत्येकले आ-आफ्नो पालोको दिन परिश्रमको सब्जी टिप्छन् र ठेकेदारलाई बेच्छन् ।

यो सानो सब्जीबारी उनीहरूलाई समय बिताउने अत्यन्तै राम्रो माध्यम मात्र हैन, राम्रो आयश्रोत पनि बनेको छ । राम्रो मौसम अर्थात् घाम लागेको बेला राम्रो उत्पादन हुन्छ र त्यसबेला सब्जी बेचेर एकघरले ६ सयदेखि ९ सय डलर ने.रु. ३५ हजारसम्म मासिक आम्दानी गर्छन् ।

कुखुरामा लाग्ने रोगले गर्दा आजकल कुखुरा पालनचाहिँ हटाइएको कुरा श्रीमती मिना लिम्बू बताउनुहुन्छ । विदेशमा आएर सुखीखुसी लाहुरेनी दिज्यूहरूलाई सब्जी उत्पादन गर्न छुट्टीको समयमा श्रीमान् र छोराछोरीले सघाउने गर्दछन् ।

विशाल सब्जीबारी घुम्दै मेरा साथीद्वय शिव र बानेश्वरसँगै सब्जीबारीको बीचभागमा पुग्यौं । त्यहाँ क्रिस्टिना सुब्बा भान्जी जो कक्षा ६ मा पढ्दैछिन्, उनलाई भेट्यौं । क्रिस्टिना रायो सागमा पानी हाल्दै थिइन् । उनीलाई सोध्यौं -"किन खेल्न नगएकी ?"

"मामुलाई सघाउन आएकी ।" उनले भनिन् । झण्डै साँझ परेको थियो । सबै सब्जीबारीका धनीहरू पानी हाल्न आएका थिए । धेरैजनासँग यो सब्जी लगाएको जग्गाको क्षेत्रफल कति छ भनेर सोध्यौं । कसैले डेढसय रोपनी कसैले अढाइसय रोपनी छ होला



भनेर अनुमान मात्र गर्न सके । कसैले चाहिँ आफ्नो निजी तीन वा चारवटा व्याड देखाए । ठूलो क्षेत्र ओगटेको यस सब्जीबारीको ठीक क्षेत्रफल पत्ता लगाउन गाह्रो भए पनि आफ्नो सानो क्षेत्रभित्रै रोपिएको सब्जी कुनै बीसदिन कुनै एकमहिना भित्रमा खान र बेच्न लायक हुन्छ । एक वर्षभित्र बाह्रदेखि तेह्र बाली लगाउन सकिने भएकोले ब्रुनाइ जी० आर्० यू० का सब्जीबारी राम्रो आयश्रोत बनेको छ ।

*प्रवासी वेदनाका आवाजहरू अर्धवार्षिक*
*२४ जनवरी २००५*

# को थिए चोखेम्बा ?

धेरैपटक सुनेको थिएँ ऊ चोखेम्बा नै हो । रमाइलो भाकामा एकले अर्कालाई जिस्काएको । ओहो ! तपाईं त चोखेम्बा नै हुनुभएछ, सिनियर मेरो गुरुलाई एकजनाले जिस्क्यायो । नोकरीको समय अवधि बढेको अर्थात् ढिलो गरी पेन्सन जाने सन्दर्भलाई जोडेर चोखेम्बा शब्द उच्चारण गर्ने चलन छ । मेरो अलि अपरिपक्व मनमा प्रश्न उठ्यो के हो ? त्यो चोखेम्बा भनेको । त्यसैले कतिपयलाई त्यो प्रश्न राख्न थालें, धेरैले अनभिज्ञता प्रकट गरे र केही कौतुहलता पनि दिँदै गए । त्यहीं प्रश्न दोऱ्याउदै हिँडिरहेको थिएँ । एकजना साथीले मलाई भन्योः चोखेम्बाको बारे लाइब्रेरी, मेसका पुस्तकहरूमा खोजे पाउन सकिएला । त्यसैले म पुर्ख्यौली सम्पतिले धनी बनेका दुबै मेस ब्रिटिस अफिसर मेस र क्वीन गोर्खा अफिसर मेस टुकर लाइन सेरिया ब्रुनाइमा घुम्न गएँ । भाग्यवस गोर्खा अफिसर मेसमा सजाएर राखिएको चोखेम्बाको थोत्रो फोटो पाँए अफसोच त्यहाँ फोटो शिवाय मैले चाहेको विवरण थिएन ।

झण्डै दुई शताब्दी लामो गोर्खालीको इतिहासमा चोखेम्बाको इतिहास मलाई ज्यादै महत्वपूर्ण लाग्यो । अन्ततः धेरै साथीहरूको सल्लाह मुताविक पहिले १० जी० आर्० मा काम गर्नुभएका अग्रजहरूलाई



भेट्ने सोध्ने गर्न थाले । त्यसै क्रममा २ आर्० जी० आर्० मा हुनुभएका क्याप्टेन हर्कराज सा'बलगायत अन्य महानुभावहरूलाई पनि सोधेँ केही थप जानकारी पाएँ । वहाँहरूकै सल्लाहमा गोर्खा मेजर लक्ष्मीभक्त सा'बसँग सम्पर्क गरेँ । चोखेम्बाको बारे जानकारी अझ थप भयो तर कथाजस्तो लाग्ने चोखेम्बाको बारे चाहिए जति जानकारी अझै प्राप्त भएन । गोर्खालीको बारे लेखिएको दर्जनौं पुस्तक पनि पल्टाएँ तर चोखेम्बालाई कतै समेटिएको थिएन ।



आखिर गोर्खा मेजर सा'बले बी० जी० एच्० क्यू० र नेपालमा भएका १० जी० आर्० मा काम गरेका पुराना मान्छेहरूलाई सोधिदिने आश्वासन दिनुभएको थियो । त्यसैलाई पर्खिबसेँ । चोखेम्बाको बारेमा मैले दायाँबायाँ सोधिखोजी गरेको झण्डै ३ महिना नाघिसकेको थियो । अकस्मात गोर्खा मेजर सा'बले फोन गर्नुभयो र भन्नुभयो:

ब्रिगेड अफ गोर्खाजको इतिहासमै सबैभन्दा लामो ब्रिटिस सेनामा नोकरी गर्ने व्यक्ति चोखेम्बा हुन । सन् १९०१ मा भर्ती भएर ४५ वर्ष लामो नोकरी गरेर तत्कालीन भारतको कोइटा नामक ठाउँमा रहेको फालिला क्याम्पबाट सन् १९४६ मा मात्र पेन्सन गएका थिए उनी । यति लामो नोकरी गर्नुको कारण उनीसँग युद्धका धेरै अनुभवहरू थियो । उनी दुःख बिराम हुने, मर्ने जन्मनेको लागि झारफुक गर्ने सिपालु विजुवा पनि थिए । कतैकतै उनी गोठाला गर्थे भनिए तापनि उनले मन्दिरमा गार्डेनिङ गर्दथे । उनलाई पेन्सन पठाउन रेल स्टेसनमा धेरैपटक पुऱ्याइएको थियो ।

त्यसवेला भागेर पुनः क्याम्प पुग्थे र आफ्नो काममा लाग्थे । साच्चै नै उसलाई पल्टन घरको काममा ठूलो मोह थियो । लिम्बू भाषा मात्र बोल्ने चोखेम्बा पल्टनका यति सिनियर बन्न पुगेकी उसका कमान्डिङ अफिसरलाई रिक्रुट भनी जिस्क्याउँथे ।

त्यसबेला फस्ट १० जी० आर्० (1/10GR) मा काम गरेका चोखेम्बाको नेपाल घर तेह्रथुम जिल्ला भएको बताइएको छ तर कुन गाउँका थिए, हाल कुन अवस्थामा छन्, अज्ञात नै रहेको छ ।

धरान निवासी १० जी० आर्० का पूर्व गोर्खा मेजर बलबहादुर तामाङको अनुसार चोखेम्बाले लडाइँमा तोसरोटी सुकाएर बोक्थे



र अरूलाई पनि तोस रोटी सुकाएर बोक्ने सल्लाह दिन्थे । एकताका चोखेम्बाको गार्डनमा सब्जी चोर्न गएका बेला आफूलाई चोखेम्बाले पक्डिएको रोचक घटना तामाङ सुनाउनुहुन्छ ।

तामाङ सा'ब आर्० एस्० एम्० (RSM) हुनु भएको बेला चोखेम्बा सार्जन्ट दर्जामा पेन्सन निस्केको बताउनुहुन्छ । तर क्वीन्स गोर्खा अफिसर मेसमा भएको फोटोमा राइफलमेन चोखेम्बा लिम्बू मात्र लेखिनुले उनको दर्जा बारे दुविधा देखिन्छ । तथापि चोखेम्बालाई ब्रिगेड अफ गोर्खाजको ऐतिहासिक महत्वका व्यक्तिको रूपमा मात्र नभई कार्यरत सबैको निम्ति प्रेरणाको स्रोत मान्न सकिन्छ । इतिहासले जसरी चोखेम्बालाई बिर्सिसकेको थियो, त्यसरी बिर्सनु हुन्न हाम्रो इतिहास हामीले कसै गरी । त्यति बिघ्न दुःख गरेर सोधिखोजी गर्न सहयोग गर्नुहुने अभिभावक र साथीहरू सबैलाई धन्यवाद मुरीमुरी !

*पर्वते मासिक वेलायत*
*१७ जनवरी २००४*

# Brunei Revolt



The Brunei Revolt broke out on the December 8, 1962 and was led by Yassin Affandi and his armed rebels. The rebels began coordinated attacks on the oil town of Seria, targeting the Shell oil installations and attacks on police stations and government facilities around the protectorate. Contemporary accounts also refer to it as the Brunei Rebellion. This uprising is seen as one of the first stages of the Borneo Confrontation.



**Background**

Between 1959 and 1962, the British, Malaya, Singapore, Sabah and Sarawak were involved in a negotiation process to form a new Malaysian Federation. However, the Philippines and particularly Indonesia opposed any move towards unification of Sarawak with the new federation by evidence of widespread anti-Federation sentiment in Sarawak and Brunei itself.



Local opposition and sentiments against the Malaysian Federation plan has often been under-represented in historical writings on the Brunei Revolt and the subsequent Indonesia-Malaysia confrontation. In fact, political forces in Sarawak had long anticipated their own national independence as promised (but later aborted) by the last White Rajah of Sarawak, Charles Vinery Brooke, back in 1941.

Left-wing and communist cell groups, which grew rapidly among Sarawak's urban Chinese communities since the 1950s (which later became the nucleus of the anti-Malaysia PARAKU and PGRS guerrilla forces), supported and propagated the unification of all British Borneo territories to form an independent leftist North Kalimantan state, an

idea originally proposed by A.M. Azahari, leader of the Brunei People's Party, who had forged links with Sukarno's nationalist movement in Java since the 1940s. The North Kalimantan (or Kalimantan Utara) proposal was seen as a post-decolonization alternative by local opposition against the Malaysian Federation plan. Local opposition throughout the Borneo territories was primarily based on economic, political, historical and cultural differences between the Borneo states and the Malayan peninsula, and the refusal to be subjected under peninsular political domination.

Contrary to popular belief, no firm evidence has ever been unearthed to support claims that Sukarno had territorial ambitions over Sarawak (he always held firmly to the 1945 decision which delineated Indonesia's boundaries to territories inherited from the former Dutch-Indies, and this might explain why he eagerly pursued Papua's - but not East Timor's - annexation). More likely was that Sukarno invested hopes for the establishment of a North Kalimantan state aligned to Jakarta's anti-colonial/imperialist geopolitics, in which he found suitable allies.

In effort to thwart any effort to form Malaysia, Indonesia became actively involved in subterfuge operation and later declared war on Malaysia. During this period, Indonesia agents came into contact with local opposition that was against the idea of a federation.

### The Battle for Seria

The town of Seria was under rebel control when two Gurkha Rifle companies began to clear the area of rebels. Soon afterwards the Queen's Own Highlanders(A Large part of the British force had been on leave) landed at Anduki Airfield and met up with 1/2 Gurkha Rifles. Anduki Airfield today is a grass airstrip with a concrete ramp used almost exclusively by Brunei Shell Petroleum aircraft and helicopters servicing Brunei's extensive offshore petroleum production installations. The Sultan of Brunei and members of the Royal Family sometimes use it in their helicopters when they wish to visit Seria, especially on State occasions. Regarded as strategically important because of its proximity to the oil town of Seria, its history in the Brunei Revolt and the paucity of other Brunei airstrips usable by fixed-wing military aircraft, Anduki and the adjacent highway to Bandar Seri Begawan is one of the first areas to be secured by Gurkha and Brunei Army troops when they deploy on contemporary war exercises.



### The assault on Limbang

In Limbang insurgents take as a hostages a British official H.Morris with his wife and four other Europeans. British team of rescuers, recruited from Marines, headed by future Captain of "Invincible" in Faulkland War. Team acquire two light motor boats and start assault. It is worth mentioned, that they have only a ten years old map. Marines loss a moment of surprise due to loud noise of their boats, but succeed to put down insurgents machine gun and landed. Attackers start search for hostages, who, when heard shots, begin singing English songs, so rescue party located and freed them soon. About 150 insurgents, who have a very limited (if any) military training and paltry assortment of weapons (dozen of Bren and Lee Enfield rifles, but mainly muskets and daggers), try to put resistance, but been beaten back. Five marines been killed and eight wounded. British sources do not tell about insurgent losses in this incident, but Clodfelter estimate all losses in Brunei Revolt as 40 insurgents and six Marines.

### Executions at Temburong

On December 8, from two till five in the morning, shots could be heard near police stations all over Brunei. According to news received from Temburong, the District Officer Pengiran Haji Besar bin Pengiran Haji Kula, a few others from Brunei security forces and a number of civilians were executed for refusing to join in the rebellion.

By five in the morning, TNKU already managed to control Pekan Besar. More words came out that a number of civil servants at Pekan Besar managed to escape capture. Around an hour later at downtown, Deputy Chief Minister Pengiran Dato Setia Haji Mohd Ali bin Pengiran Dato Setia Haji Muhammad Yusuf bin Pengiran Haji Abdul Rahim was granted audience by the Sultan. After the meeting, the Sultan made a public appearance through radio to condemn TNKU, which was the armed wing of Parti Rakyat Brunei, for treason.

### Consequences of the revolt

Finally,  it was ended when the last rebel leader, Yassin Affandi was captured by British Troops.

***Sources:***
*http://en.wikipedia.org/wiki/Brunei_Revolt*
by **Vladimir Nosov** (Russia).

## बोर्नियो टापुमा बोलिने मले भाषाका केही शब्दहरू:

| | | |
|---|---|---|
| स्वागतम | - | सलामात ढाटाङ |
| बिहानीको नमस्कार | - | सलामत पागी |
| बेलुकीको नमस्कार | - | सलामात मालाम |
| तिम्रो नाम के हो ? | - | स्याप नामा ? |
| कस्तो हुनु हुन्छ ? | - | आप्पा खबर ? |
| धन्यवाद | - | तेरिमाकासे |
| फेरि भटौंला | - | किता जुम्पालागि |
| राम्रो | - | बागवुस |
| नराम्रो | - | टिडा बागवुस |
| म | - | साया |
| माया | - | चिन्ता |
| तिमी/तिमीलाई | - | कामु |
| हुन्छ | - | बोले |
| हुदैन | - | टिडाबोले |
| गफ गर्नु | - | चाकाप |
| जाउँ | - | जालान |
| खोज्नु | - | चारी |
| केटी | - | प्रामपुवान |
| केटा | - | त्वान |
| साथी | - | कवान |
| श्रीमती | - | स्त्री |
| मान्छे | - | ओराङ |
| छुट्टी | - | छुत्ति |
| खानु | - | माकान |
| राजा | - | राजा, सुल्तान |
| के ? | - | आप्पा ? |
| कहाँ ? | - | माना ? |
| कति ? | - | बरप्पा ? |
| पैसा | - | रिङ्गित |
| टाढा | - | जाव |
| थोरै | - | सिरिकित |
| यहाँ आउनुहोस | - | मारि सिनी |
| त्यहाँ - सानायो | - | यितु |
| घुमघाम | - | जालानजलान |
| नडराउनु | - | जङ्गान मारा |
| कोठा | - | विलेक |
| घर | - | रुमा |

(ख्याल गर्न सकेको खण्डमा ओके (हुन्छ) लाई ओके लाः प्रायः ब्रुनाइकाले प्रयोग गर्छन् भने ओके वाः लगाएमा मलेसियन वा इन्डोनेसियन भएको अनुमान गर्न सकिन्छ।)

### स्रोतहरू:


१. *This is Borneo by Junaidi Payne, Fifth edition 2005, Malaysia*
२. *The Magic of Borneo by Sean Sheehan, First edition 2003, London*
३. *History of Brunei Darussalm: Sharing Our Past, Secondary 1, Singapore 2004*
४. *http://en.wikipedia.org*
५. *www.regiment.org*
६. *Brunei Garrison Education Centre, Tuker Lines, Seria, Brunei*
७. *धु० पू० क्याप्टेन. गजरधन तिगेला, धरान १६*
८. *प्रत्यक्ष खोज यात्रा; मुलु गुफा, नेहा गुफा, माउन्ट किनाबालु, लाभुवान, मिरी, विन्तुलु, क्वाल्लम्पुर मलेसिया, सिङ्गापुर र ब्रुनाइ सन् १९९७ - २००६*



सुन्दर ठाउँ सेरिया ब्रुनाई



बेलाबखत डुबाउमा पर्ने क्षेत्र





भुईमुनिबाट तेल तान्ने मेसिन



बन्दरसेरी बेगवानको एक आकर्षक वाटर भिलेज



लङ हाउसभित्रको एक दृष्य



मले विद्यार्थी बाहूल्य रहेको एक विद्यालय





उच्च शिखर माउन्ट किनाबालू चुम्दै आरोहीहरू



घना जङ्गलको बीच भागमा मुलू रिसोर्ट